श्रीः

रातत्व प्रकाशन माला-१८

# लिच्छविलिपि-संग्रह

बुद्धिसागर पराजुलिका

अध्यक्षतामा

शङ्करमान राज वंशी द्वारा

सम्पादित

श्री ५ को सरकार

वीरपुस्तकालय बाट

प्रकाशित

श्रीः

# लिच्छवि-लिपि संग्रह


बुद्धिसागर पराजुलिका

अध्यक्षतामा

शङ्करमान राज वंशी द्वारा

सम्पादित



श्री ५ को सरकार

वीरपुस्तकालय बाट

प्रकाशित

४५ सौं जन्मजयन्तीको शुभ पर्वमा



श्री ५ महाराजाधिराज सरकारका

पुण्यमय जुनाफमा

अभिनन्दन पूर्वक

स<br>म<br>र्पि<br>त

सभक्ति

पुरातत्व विभाग परिवार

# निर्देशकको

## वक्तव्य

पुरातत्व प्रकाशन मालाको यस नौलो उपहारले नेपाली इतिहास र साहित्यको क्षेत्रमा अध्ययन र अनुसन्धान गरिरहनु भएका कर्मठ–हरूलाई मात्र नभई साधारण पाठकहरूलाई समेत आ–आपनो उद्देश्य-को प्राप्तिका लागि ठूलो मद्दत पुऱ्याउने छ भन्ने कुरामा मलाई पूर्ण भरोसा छ । समयको माग यही नै छ कि आज हामीले नेपाल–को इतिहासका सम्पूर्ण खण्डहरूको यथार्थवादी दृष्टिकोण राखी तथ्यको आधारमा सही मूल्यांकन गर्नु परेको छ निःसन्देह, यसो गर्न भाषा र लिपिको ज्ञान हुनु हाम्रो प्राथमिक आवश्यकता बन्न जान्छ । त्यसै–को प्रकाशमा हामीले अतीतको रहस्योद्घाटन गर्न सक्छौं । अन्यथा अर्थको अनर्थ हुने र वास्तविकताको हत्या हुन गई इतिहासको कुनै युग नै कलंकित हुन जाने आशंका पनि वसीरहन सक्छ । यस संदर्भमा प्रस्तुत पुस्तकले एउटा सचेत मार्ग दर्शकको रूपमा काम गर्नेछ । यस पुस्तकको रचना निकै महत्वपूर्ण अभिलेखहरू र ताडपत्रहरूको विशद अध्ययन द्वारा सम्भव हुन गएको हो । यस पुण्य कार्यमा योगदाग गर्नु हुने सबै क्रियाशील सहयोगीहरूलाई म हृदय देखि धन्यवाद अर्पित गर्छु ।

श्री ५ महाराजाधिराज सरकारको ४५ सौं जन्मोत्सवको महान् उपलक्षमा श्री ५ को सरकार, पुरातत्व विभाग, वीर पुस्त–कालय द्वारा प्रकाशित यो पुस्तक विद्वत् वर्गको सेवामा प्रस्तुत छ ।

**रमेश जंग थापा**
निर्देशक
श्री ५ को सरकार, पुरातत्व विभाग

# पुस्तकालयीय वक्तव्य

इतिहास विद्या भनेको कुरा जुन सुकै जातिका निमित्त पनि गौरवको कुरा हो। जुन जातिको अथवा जुन राष्ट्रको परिस्कृत इतिहास छैन त्यो जाति एवं राष्ट्र चिरस्थायी रहन सक्दैन। इतिहासले आत्मगौरव दर्शाउंछ आत्मगौरव वा आत्माभिमान नहुने जाति वा राष्ट्र दास हुन्छ। हामीलाई इतिहासको महत्वको ज्ञान वेद उपनिषद् आरण्यकहरू द्वारा भएको छ। दिन दिन वेद पुराण पाठ गरे भैं इतिहास पनि पाठ गर्नू भन्ने हाम्रो परम्परा छ, तदनुसार रामायण महाभारत पाठ गर्ने सुन्ने सुनाउने गर्छन्। रामायण महाभारतहरू पुराना इतिहास हुन्। हामीलाई आफ्नो नयां इतिहास जान्नू पनि नितान्त आवश्यक छ। नयां युगका निमित्त नयां इतिहासले प्रेरणा दिन्छ। हाम्रा गोर्खाली वीरहरूले अंग्रेज संग लड्दा पुराना ढाचाका खुडा ढाल तलवार धनु वाण भोल्टो घुंयेत्रो भाला बर्छा जस्ता पुराना हतियार मात्रको प्रयोग गरेनन्। "मानिस हेरी कुरा, कपाल हेरी छुरा" भन्ने उखानको याद गरी समय र शत्रु बमोजिमको व्यवहार गरी राष्ट्रलाइ जीवित राखे। मानदेव अंशुवर्मा नरेन्द्रदेव जयस्थिति मल्ल प्रतापमल्ल समेतका अतीतका राजाहरूको इतिहासले पनि हामीलाइ प्रेरणा दिइरहेकोछ।

हाम्रा संतानलाइ हामीले वेहोरेको कुरा अनौठो लाग्ने भयो। हामीले जाने सुनेको कुरा हामीले ठीक लेखि दिने गरेनौ भने हाम्रा संतानलाइ भ्रम हुन्छ। लेखेको कुरो बुझेनन् भने पनि भ्रम हुन्छ। आज इतिहास पढाउंदा यस्ता भ्रमात्मक पढाइ भएको छैन भन्न हामी सर्वथा असमर्थ छौं। नेपालको १२००। वर्ष पुरानो इतिहास लेखिएका शिलापत्र वा ताडपत्रहरू लिच्छविलिपिमा छन्। त्यो लिपि नाचने संम त्यस बेलाको इतिहास ठीक जान्न सकिन्न र प्राचीन ग्रन्थहरूको अध्ययन पनि हुन सक्दैन। यस कारण यो पुस्तकालयमा आएर लिपिको अनुसंधान गर्ने इच्छार दैवको तारतम्य दुवै मिल्दा र काम गर्ने सहयोगी समेत इतिहासको तथ्य बुझिदिने भै दिएकाले निज पं. शङ्करमान जीद्वारा लिपिको चित्र बनाउन लगाई लिपि लेख्ने सरल परिचय समेतका कुराहरुको बोध गराउन केही वक्तव्यका साथै यो लिच्छवि लिपिसंग्रह भन्ने सानो पुस्तिकाको संपादन गराइएको छ। जुन जुन अभिलेखका जुन जुन अक्षरहरूको उद्धरण भएको छ त्यसको समेत टिप्पणीमा उल्लेख भएको छ। यस्ता काममा समुन्नत राष्ट्रमा धेरै मद्दत हुन्छ। हाम्रा यहां विशेषज्ञहरू पर्याप्तमात्रामा छैनन् तापनि जो जति छन् व्यक्तिबाट हुने सम्म लाभ उठाउनै पर्ने हुनाले र गर्दैन गर्नु भन्दा केहि गरिरहनु पनि वढिया हुनाले यो पुस्तक प्रकाशनमा ल्याइएको छ। सहाय संपतको अनुपात हेर्दा काम राम्रै भए जस्तो लागेको छ। गुण दोषको पहिचान त पाठक वर्गबाट हुनेनै छ तापनि जिज्ञासुहरूलाइ यस बाट निकै लाभ होला भन्ने दुविधा छैन। यसमा परिश्रम गर्ने प्रिय पं. शङ्करमान राज बंशी धन्यवादाह हुनुहुन्छ।

श्री ५ महाराजाधिराज सरकारको ४५ सौं शुभ जन्मोत्सवको उपलक्षमा उपहार स्वरूप यो पुस्तक चढाउन पाएकोमा वीर पुस्तकालय लाइ बहुतै आनन्द लागेको छ।

बुद्धिसागर पराजुलि
अध्यक्ष– वीर पुस्तकालय

वि. सं. २०२१
जेष्ठ २९ गते

# सम्पादकीय वक्तव्य

जुन वखतमा भारतमा गुप्तको साम्राज्य थियो त्यस वखतमा नेपालमा लिच्छविको राज्य थियो। तिन ताका राजाले आफूले गरेको काम तथा राज्य सम्वन्धी सनद सवाल दुनियाँमा प्रचार गर्नाका लागि शिलापत्रमा कुंदाई ठाउँ ठाउँ राख्ने गर्दथे। सो कुरा शिलापत्रको अध्ययनले स्पष्ट थाहा हुन्छ। गुप्त साम्राज्य ताकाका शिलालेखहरू भारतमा पाइन्छन्। नेपालमा पनि लिच्छविकालका शिलालेखहरू प्रशस्त पाइन्छन्। भारतका गुप्तकालका अभिलेख र नेपालका लिच्छविकालका अभिलेखमा लिपिमा उत्तिको अन्तर छैन। तर लिच्छवि अभिलेखमा पाइने लिपिलाई गुप्तालिपि भन्ने नेपालमा चलन थियो। १७ सालमा श्री ५ को सरकार पुरातत्त्वर संस्कृति विभागबाट आफ्नै ढङ्गको नाम राख्नु पर्छ भनी त्यस लिपिलाई लिच्छविलिपि भन्ने नामकरण गरेकोले तिनै लिपि विषयको यस पुस्तकलाई लिच्छविलिपि संग्रह भन्ने नाम राखिएको हो।

नेपालमा लिच्छविका अभिलेख अहिले भन्दा १५०० वर्ष पुरानो सम्म पाइएको छ। त्यो हो चाँगुको मानदेवको स्तम्भ लेख। अन्त्यमा गएर अन्दाजी विक्रमको नवौं शताब्दी ताका सम्मका पनि लिच्छविलिपिमा लेखिएका ताडपत्र पाइएका छन्। तर लिपि पछि सम्म एकैनाशको भएर आएको छैन। प्रायः शताब्दी पिच्छे भने जस्तो लिपिमा फरक फरक हुँदै आएको छ। त्यस्तो हुनु कुनै आश्चर्यको कुरो छैन। किन भने तिनताका छाप्ने सामानको आविष्कार भएको थिएन, हातले लेख्दै गएका लिपिमा कालान्तरमा गई फरक पर्दै जानु स्वाभाविक छ।

लिच्छविकालको नेपालको इतिहास तयार पार्न लिच्छवि अभिलेख सिवाय अरु सामाग्री पाइंदैनन्। ती अभिलेख प्रौढ संस्कृत भाषामा पाइन्छन्। किन भने लिच्छविकालमा संस्कृतको निकै उन्नति भएको थियो। सो कुरा नमुनास्वरूप मानदेवको स्तम्भ लेख हेरे थाहा हुन्छ। यस कारण लिच्छविकालको इतिहास जान्नका लागि तत्कालको लिपि र संस्कृत भाषामा दख्खल नभई सम्भव छैन। तिन मध्ये प्रथम खुडकिलोत लिपि नै हो। लिपिनै विभिन्न थरी भई दिंदा मानो पासो थापे जस्तै हुन गएका छन्। प्राय इतिहासकारहरू त्यसैमा अलमलिन्छन्। यसरी लिपिको कठिनाई हुनाले सो हटाउना निमित्त जो सकेको परिश्रमबाट लिच्छवि लिपिको बढीमात्रामा सङ्कलन गरी यो पुस्तक तयार गरिएको छ। यो सङ्कलन मैले पुरातत्त्व विभागमा बस्ता १४ सालदेखि १६ साल भर बसी गरेको हुँ। अहिले सम्पादन भई वीर पुस्तकालयबाट प्रकाशित हुन लागेको यो लिपि विषयको मेरो तेस्रो पुस्तक हो। मेरा लिपिका दुई पुस्तक १७ सालमा पनि पुरातत्त्व विभागबाट प्रकाशित भइ सकेका छन्।

लिच्छवि लिपि संग्रह भन्ने यस पुस्तकमा चाहिं स्वर वर्ण देखि लिएर वर्ण क्रमले संग्रह भए सम्मका लिपिको सम्पादन गरिएको छ। विभिन्न अभिलेखहरूबाट फरक फरक पाइए सम्मका लिपिका विभिन्न थरी यसमा समावेश गरिएका छन्। अन्त्यमा लिच्छवि कालको अङ्क दिइएको छ। प्रत्येक लिपिमा अभिलेखको संख्याको संकेत दिइएको छ। जुन जुन अभिलेखबाट लिपि सङ्कलन गरिएको छ ती अभिलेखहरुको अलि अलि भाग उदाहरणमालामा दिइएको छ। अङ्कको उदाहरणमा चाहिं धेरै अभिलेखहरुबाट संवत्का अङ्क उतारी दिइएको छ। यस पुस्तकमा लिच्छविलिपिको वर्णको परिचय र वर्णमा लाग्ने मात्राको नियम तथा अङ्कको नियम एवं अभिलेख उतार्दा कसरी उतार्ने त्यसको विधि पनि दिइएको छ

*सम्पादक*

शङ्करमान राजवंशी (मल्ल)

# विषय-सूची

# कागतमा शिलापत्र छाप्ने
## विधि

### पहिलो विधि

पहिले अभिलेख कुँदिएको ढुङ्गालाई धोई सफासँग पुछ्नुपर्छ । यदि ढुङ्गामा लेउ लागेको भए मट्टितेलले धोई पुछ्नुपर्छ । त्यस पछि अभिलेख जत्रै कागत काटी एकापट्टि पानीले सल्ल भिजाई अभिलेखमा टास्नुपर्छ । अनि नरम कपडा को पोकाले वा नरम बुरूसले अभिलेखमा थपथप पारी अक्षर नउठेसम्म थिच्नुपर्छ । यति गरेपछि प्रेसमा छाप्ने मसी चिप्लो पाटीमा वेलनले फिट्नू र अलि कडा हुने गरी डल्लो पारी बनाएको कपडाको छापदानीले फिटिएको मसी चोपी अभिलेखमा टाँसेको कागजमा विस्तारै थपथप पारी मसी लगाउनू । अथवा कपडाले बेरी बनाएको वेलनले मसी फिटी त्यस वेलनले सो अभिलेखमा टाँसिएको कागतमा दल्नू, सुल्टो अभिलेखको छापा उत्रन्छ ।

### दोस्रो विधि

अभिलेखमा मसी वेलनले लगाई पातलो कागत अभिलेखमा टाँसेर अभिलेखको छापा उतारे पनि हुन्छ । त्यसमा मसी लागेपट्टि अक्षर उल्टो हुन्छ । तर पातलो कागत हुनाले मसी नलागेपट्टि पृष्ठमा अलि धमिलो सुल्टै अक्षर देखिन्छ ।अथवा मसी लागेपट्टिको उल्टो अभिलेख ऐनामा देखाएर पनि सुल्टै हेर्न सकिन्छ ।

### तेस्रो विधि

सफासँग पुछिसकेको अभिलेखमा छेउछेउको चारै कुनामा गुँद लाएर अलि पातलो खालको कागत टास्नू । अनि ज्यादा नरम पनि नभएको ज्यादा सान्हो पनि नभएको ठिक्कको रवरको वेलनले चिप्लो पाटीमा मिहीनसँग मसी फिटी त्यसले सो अभिलेखमा टाँसेको कागतमा सावधानीसाथ अलि थिचेर मसी दल्नू, सुल्टो अभिलेखको छापा उत्रन्छ ।

## चौथो विधि

सफासँग पुछिसकेको अभिलेखमा ठिक्कको कागत टास्नू । त्यसमा सिसाकलम–को टुप्पोले विस्तारै विस्तारै दल्नू , सुल्टो अभिलेखको छापा उत्रन्छ ।

## पाँचौं विधि

क्यामराले फोटो खिच्ने

# लिच्छविलिपिको स्वर वर्णको परिचय

## अ

लिच्छविलिपिमा अ अक्षर अहिलेको देवनागरी लिपिको डिको नभएको प अक्षरको पेटमनि त अक्षर जोडेको जस्तो छ । कालान्तरमा यो प अक्षर अलि अलि परिवर्तन हुँदै गएकोले यसको विविध भेद पाइएका छन् । तिनमा अहिलेको देवनागरी अक्षरको डिको नभएको दन्त्य स जस्तो पनि पाइएको छ। पछिल्लो कालमा गएर त झण्डै अहिलेको देवनागरी अ जस्तै भइसकेको पाइएको छ ।

## आ

यो अक्षर लिच्छविलिपिमा अ अक्षरमै अलिकति संस्कार गरेर बनाइएको छ। तर अहिलेको देवनागरीमा जस्तै अ को पछिल्तिर कान्नानीको ठाडो धर्को लाग्दैन । खुट्टामा तर्कुल्ले ७ अङ्क जस्तो जोडिन्छ । कुनै कुनैमा त तर्कुल्ले नलागेको डँडालोमा चोसो निस्केको पनि पाइन्छ ।

## इ

लिच्छविकालमा इ अक्षरको विन्यास बडो गज्जबको छ। पहिले ठाडो धर्को दिई त्यसको अघिल्तिर विसर्ग जस्तो दुइटा शून्य दिइएका हुन्छन् । पछिल्लो कालमा गएर त आँखा र मुखको चित्रको रूप लिन खोजेको छ। यसरी पछि गएर मल्लकालको इ को अक्षरसँग मिल्न गएको छ ।

## ई

यो अक्षर लिच्छविलिपिकै इ अक्षरमा टाउकोमा कल्की दिइएको हुन्छ।

# उ

लिच्छविलिपिको उ अक्षर अहिलेको देवनागरी लिपिको ट अक्षर जस्तै भई घाँटो लामो भएको पाइन्छ। डिकोमा चाहिं डल्लो परेको हुन्छ । यसरी लिच्छविकालको र अहिलेको देवनागरी लिपिको उ अक्षरको तुलनामा मानो टाइप थासा जस्तै ठीक उल्टो पर्न गएको छ ।

ऊ, ऋ, लृ,-अक्षर लिच्छविअभिलेख मा पाइएका छैनन् ।

# ए

लिच्छविकालमा ए अक्षरको विन्यास त्रिकोणमा परिणत भएको छ। सो त्रिकोणको स्वरूप यस्तो छ कि पहिले डिको तानी दाहिने पट्टिको टुप्पोबाट सोझो धर्को कान्नानी दिए झैं झारेको हुन्छ। अनि ती २धर्काको बाँकी दुइ टुप्पामा छुनेगरी अर्को सोझो धर्को तानिएकोहुन्छ ।यसरी त्रिकोण त्रिभुज बनेकोहुन्छ। त्यस- लाई लिच्छविकालमा ए भनिन्थ्यो । अहिलेको देवनागरी ए र लिच्छविलिपिको ए अक्षरको तुलनामा ठीक उल्टो पर्न गएको छ।

# ऐ

यो अक्षर लिच्छविलिपिमा ए अक्षरमै अलिकता संस्कार गरेर बनाएइको छ । देवनागरीमा जस्तै टाउकोमा एक लख दिइएको हुँदैन । केवल वायाँपट्टि डिको अलि लामो तानिएको हुन्छ ।

# ॐ

यो अक्षर अहिलेको देवनागरी अक्षरको ७ अंक जस्तो छ। कतै कतै सातको पुच्छर टाउकोसम्म पुगेको र कतै कतै डँडालोसम्म पुगेको पनि पाइन्छ।

ओ औ:– अक्षर लिच्छविअभिलेखमा पाइएका छैनन्। तर ए अक्षरमा संस्कार गरी मात्रा लगाएर ऐ अक्षर बनाए जस्तै आ अक्षरमा डिकोमा मात्रा लाएर ओ अक्षर बन्ने तथा ओ अक्षरमै फेरि अको मात्रा थपेर औ अक्षर बन्ने होलान् भन्ने अडकल गर्न सकिन्छ।

# लिच्छविलिपिको व्यञ्जन वर्णको परिचय

## क

लिच्छविकालको क अक्षरको विन्यास मानो दुवै हात पसारेको ठिङ्ग उभिएको मानिसको भान पर्दछ । त्यसमा ठाडो धर्को तानिएको हुन्छ । त्यसले उभिएको देखाउँछ । त्यसको डिको डल्लो परेको हुन्छ । त्यसले टाउकोको रूप देखाउंछ । ठाडो धर्कोलाई काट्ने गरी छातीबाट अलि छोटो अर्को धर्को तानिएको हुन्छ । त्यसले २ हात पसारेको जस्तो देखाउँछ । यसरी त्यस चित्रले लिच्छविलिपिको क लाई बुझाउँछ । पछिल्लो कालमा गएर देब्रेपट्टिको हातले खुट्टा छुन पुगेको पनि पाइन्छ ।

## ख

लिच्छविलिपिको ख अक्षर झण्डै अहिलेको देवनागरी अक्षरको ख जस्तै हुन खोजेको छ । र को खुट्टा झरेको हुँदैन । टाउको गोलाकार हुन्छ । लिच्छविलिपि र देवनागरी लिपिको ख अक्षरमा केवल त्यत्तिनै फरक छ । खरायो ख भन्ने जो उक्ति छ त्यसलाई लिच्छविलिपिको ख अक्षरले साकार बनाएको छ । किन भने मानो बसेको खरायोकै चित्र उत्रेको छ । व टाउको जस्तो, र को खुट्टा पुच्छर जस्तो देखिन्छ ।

## ग

लिच्छविकालको ग अक्षरको विन्यासले परम्परागत चलिआएको गाईगोडे ग भन्ने उक्तिलाई साकार गराएको छ । सो ग को चित्र उचालेको गाईको गोडा

जस्तं छ । ङिको गोल परेको हुन्छ । पछिल्लो कालमा गएर ङिको सोझो भई अहिलेको देवनागरीको ग जस्तै भएको पाइन्छ ।

## घ

लिच्छविलिपिको घ अक्षर अहिलेको सानो अंग्रेजी अक्षरको डब्लु जस्तो छ। घर जस्त घ भन्ने जो परम्परागत उक्ति छ सो कुरा यस घ को चित्र हेर्दा मिल्दो देखिन्छ ।

## ङ

लिच्छविकालको ङ अक्षर र अहिलेको देवनागरी अक्षरको आठको अङ्क जस्तो छ । अभिलेखमा अलग्ग ङ को मात्र अक्षर पाइएको छैन । जति पाइएका छन् संयुक्ताक्षर मात्रै छन् ।

## च

लिच्छविलिपिको च अक्षरको चित्रले चरिचुच्चे च भन्ने जो परम्परागत उक्ति छ त्यो ठिक्क मिलेको छ । किन भने सो चित्र मानो चराको चुच्चो सहितको टाउको जस्तै देखिन्छ । सो अक्षर लेख्ता अहिलेको देवनागरी अक्षरको ठ लेखे जस्तं लेखिन्छ । तर पेटमा चुच्चो पारिन्छ । ङिको डल्लो परेको हुन्छ । पछिल्लो कालमा गएर अहिलेको देवनागरी च जस्तै हुन खोजेको पाइन्छ ।

## छ

यो अक्षर लिच्छविलिपिमा माथि फर्केको लाटोकोसेरोको मुख जस्तो छ । ठाडो धर्कोको मनि अगलवगलमा आँखा जस्तो दुइटा शून्य जोडिएका हुन्छन् । छ

अक्षर लिच्छविअभिलेखमा अलग्गै पाइएको छैन । जति पाइएका छन् च. ञ. श. सँग जोडिएका मात्रै छन् ।

# ज

लिच्छविलिपिको ज अक्षर र अहिलेको ठूलो अङ्ग्रेजी अक्षरको मा फरक छन ।

झ – अक्षर लिच्छविअभिलेखमा पाइएको छैन ।

# ञ

लिच्छविअभिलेखमा ञ अक्षर अलग्गै पाइएको छैन । जति पाइएका छन् च ज श संग जोडिएका मात्र छन् । च ज मा जोडिएको अक्षर अहिलेको देवनागरी अक्षरको ल जस्तो छ। सो संयुक्त ञ अक्षर कतै कतै च ज को टाउकोमा कल्की लगाए जस्तो पनि पाइन्छ । कतै कतै टाउकोको डिकोमाथि अहिलेको देवनागरी अक्षरको दुइको अङ्क लगाए जस्तो पनि पाइन्छ । श मा लागेको ञ अक्षर चाहिँ अहिलेको ठूलो अंग्रेजी अक्षरको आर जस्तो पाइन्छ ।

# ट

लिच्छविलिपिको र अहिलेको देवनागरी लिपिको ट अक्षरमा उत्तिको अन्तर छैन । डिकोमा लिच्छविलिपिमा अलि पछिल्तिर झुकेको हुन्छ ।

# ठ

यो अक्षर लिच्छविलिपिमा केवल बाटुलो वृत्ताकार मात्रै हुन्छ । डिको हुँदैन ।

## ड

यो अक्षर लिच्छविलिपिमा जुंगेकोष्ठ अर्थात् डब्बल कोष्ठ जस्तो छ। डिको डल्लो परेको हुन्छ।

## ढ

लिच्छविलिपिको र अहिलेको देवनागरी लिपिको ढ अक्षरमा कत्ति फरक छैन। परम्परागत चलिआएको कुकुरपुछ्रे ढ भन्ने उक्तिलाई यो अक्षरले आज सम्म साकार गरिआएकै छ। डिको चाहिं डल्लो परेको हुन्छ।

## ण

लिच्छविलिपिको ण को अक्षर अहिलेको देवनागरी अक्षरको भ जस्तो छ। डिको पछिल्तिर लर्केको हुन्छ। पछिल्लो कालमा गएर भजस्तो ण को पेटको अघिल्तिरको गाँठो खसिसकेको हुन्छ र भ को मुन्टो मानो लाजलेझैं ज्यादै निहुरन थाल्छ।

## त

लिच्छिविलिपिको र अहिलेको देवनागरी लिपिको त अक्षरमा उतिको अन्तर छैन। केवल लिच्छविलिपिमा डिको डल्लो परेको हुन्छ। यस अक्षरले पनि परम्परागत चलिआएको कोदाली पाने त भन्ने उक्तिलाई साकार पारेको छ। किन भने सोत को चित्र दुरुस्तै वीँड भएको कोदालो जस्तै देखिन्छ।

## थ

यो अक्षरको विन्यास लिच्छवि लिपिमा तलतिर हेरेको लाटोकोसेरोको मुख जस्तो छ। यो अक्षर लिच्छविपिकै डिको तल परेको ठीक छ को अक्षरलेनै

बनेको छ । कालान्तरमा यो अक्षर अलिअलि परिवर्तन हुँदै गएकोले यसका विविध भेद पाइएका छन् । कतै विर्कोले छोपेको बट्टा जस्तो पाइन्छ कतै ठूलो अंग्रेजी बी अक्षरको उल्टो रूपको पाइन्छ ।

## द

लिच्छविलिपिको द अक्षर अहिलेको देवनागरी अक्षरको ट जस्तो छ । खुट्टा गाँठो पारी तल झारिएको हुँदैन । डिको डल्लो परेको हुन्छ देवनागरी द को जस्तो पेट चाहिं बाटुलो परेको हुदैन र अलि चोसे मोसे परेको हुन्छ । पछिल्लो कालमा गएर अहिलेको देवनागरी द जस्तै हुन गएको छ ।

## ध

लिच्छविलिपिको ध अक्षर अहिलेको देवनागरी अक्षरको खुट्टा नझरेको घ अक्षर जस्तो छ । डिको जोडिएको हुन्छ ।

## न

यो अक्षरको विन्यास लिच्छविलिपिमा मानो एक फन्का वरेर फणा उठाइकन हेरेको सर्प जस्तो छ । डल्लो डिको टाउको जस्तो देखिन्छ । तल झरेको खुट्टा पुच्छर जस्तो देखिन्छ ।

## प

लिच्छविलिपिको प अक्षर अहिलेको देवनागरी अक्षरको झण्डै पाँचका अङ्क जस्तो छ। डिको जोडिएको हुँदैन । अगाडिको टुप्पोमा मात्र डिको हुन्छ । सो डिको डल्लो परेको हुन्छ । खुट्टा झरेको हुंदैन ।

## फ

यो अक्षर लिच्छविलिपिकै प अक्षरको पेटभित्र वजोडिएको जस्तो छ । यस चित्रमा झण्डै ऊँट जस्तो भान पर्दछ । डल्लो परको डिको ऊटको टाउको जस्तो देखिन्छ । पेट भित्र को व जस्तोको चोसो चाहिं डडालो जस्लो देखिन्छ । कतै कतै चोसो नपरेर वाटुलै परेकोपनि हुन्छ । छोरी वोक्यो फ भन्ने जो उक्ति हो त्यस उक्ति अनुसार लिच्छवि कालमा फले छोरीलाई पेटमा वोकेको थियो अहिले चाहि पिठ्यूँमा बोक्दैछ भन्ने कुरो स्पष्ट देखिन्छ ।

## ब

यो अक्षरको विन्यास लिच्छविकालमा चारकुने वेदी जस्तो छ । त्यस वेदी जस्तो चारकुने चतुर्भुज क्षेत्रले लिच्छविकालमा ब भन्ने अक्षरलाई बुझाउँथ्यो । पछिल्लो कालमा गएर चारकुने वेदीमा अलि विकृत भई पेट बढदै गएको पनि पाइन्छ ।

## भ

लिच्छवि कालको भ अक्षर झण्डै लिच्छविकालकै त अक्षर जस्तो छ । केवल थुतुनोमा अलि फरक छ । भको थुतुनो गैंडाको जस्तो सिंग निस्केको हुन्छ तको हुंदैन ।

## म

लिच्छवि लिपिको म अक्षर अहिलेको देवनागरीको म अक्षर जस्तैछ । डिको जांडिएको हुंदैन । अगाडिको टुप्पामा मात्र डिको हुन्छ । सो डिको डल्लो परेको हुन्छ । खुट्टा झरेको हुँदैन ।

## य

लिच्छवि कालको य अक्षर झण्डै लिच्छविकालकै घ अक्षर जस्तो छ। अगाडि पट्टिको टुप्पोमा वाटुलो चक्का अर्थात् शून्यको चिन्ह जोडिएको हुन्छ। पछिल्लो कालमा गएर अहिलेको देवनागरी अक्षरको य जस्तै हुन खोजेको पाइन्छ।

## र

यो अक्षरको लिच्छविकालमा केवल ठाडो सोझो धर्को मात्रै हुन्छ। डिको डल्लो परेको हुन्छ।

## ल

लिच्छवि कालको ल अक्षरको चित्र मानो हात्तिले सूंड उठाएको जस्तोछ। डिको डल्लो परेको हुन्छ। खुट्टा झरेको हुंदैन। पछिल्लो कालमा गएर झण्डै अहिलेको देवनागरी अक्षरको ल जस्तै हुन खोजेको छ।

## व

यो अक्षरको विन्यास लिच्छविकालमा लोहोटाको चित्र जस्तो देखिन्छ। डिको डल्लो परेको हुन्छ। पेट बाटुलो बाटुलो परेको हुन्छ। चाक थ्याप्चो हुन्छ खुट्टा झरेको हुंदैन।

## श

लिच्छविकालको श अक्षर अहिलेको देवनागरी प अक्षरको पेटबाट नाइटो झरेको जस्तो देखिन्छ। कतै कतै झण्डै अहिलेको देबनागरी लिपिको स जस्तो हुन खोजेको पनि पाइन्छ।

## ष

यो अक्षर लिच्छवि कालमा अहिलेको देवनागरी लिपिको अ अक्षर जस्तो छ । डिको जोडिएको हुंदैन । डिको अगाडि पट्टो मात्रै लागेको हुन्छ । सो डिको डल्लो परेको हुन्छ । पेटको गाँठो वाटुलो हुन्छ ।

## स

लिच्छविकालको स अक्षर तथा ष अक्षर झण्डै उस्तै छन् । स को पेटको गाँठो वाटुलो हुदैंन, च्याप्टो तथा चोसो परेको हुन्छ ।

## ह

लिच्छवि कालको ह अक्षर अहिलेको देवनागरी लिपिको ड जस्तो छ । डिको डल्लो परेको हुन्छ ।

## क्ष

'क ष संयोगे क्षः' क अक्षरमा ष अक्षर मिलेर क्ष बन्दछ भन्ने पाणिनि व्याकरणको नियमको कुरा लिच्छविलिपिमा स्पष्ट देखिन्छ । लिच्छविलिपिको क्ष अक्षर क अक्षरको खुट्टामा ष अक्षर जोडेर वनेको हुन्छ ।

## ज्ञ

'जञोर्ज्ञः' ज अक्षरमा ञ अक्षर मिलेर ज्ञ वन्दछ भन्ने पाणिनिको व्याकरणको नियमको कुरा लिच्छविलिपिमा स्पष्टै देखिन्छ। लिच्छविलिपिको ज्ञ अक्षर ज अक्षरको खुट्टामा ञ अक्षर जोडेर वनेको हुन्छ।

# लिच्छविलिपिका व्यञ्जन वर्णमा मात्रा लाउने सामान्य नियम

**आ**– कारको मात्रा लाउँदा अक्षरको टाउकोबाट दायाँ पट्टि अलिकति तल झुक्ने गरी तेर्सो धर्को तान्नुपर्छ ।

**इ**— कारको मात्रा लाउँदा अक्षरको टाउकोमा बायाँपट्टि लर्कने गरी कल्की लगाउनुपर्छ ।

**ई**— कारको मात्रा लाउँदा अक्षरको टाउकोमा दायाँ पट्टि लर्कने गरी कल्की लगाउनुपर्छ ।

**उ**— कारको मात्रा लाउँदा अक्षरको खुट्टा अलि तल सम्म तानी तल्लो भाग मोटो र डल्लो पार्नुपर्छ ।

**ऊ**– कारको मात्रा लाउँदा अक्षरको खुट्टा अलि तल तानी खुट्टाको टुप्पोबाट बायाँपट्टि तेर्सो धर्को तेर्स्याएर तलतिर कुकुरको पुच्छर झैं घुमाउनु पर्छ ।

**ऋ**– कारको मात्रा लाउँदा अहिलेको देवनागरी लिपिको अक्षरमा जस्तै लिच्छविलिपिमा खुपनि ट्टा पछिल्तिर मर्काए पुग्छ ।

**ॠ-ऌ**— को मात्रा लागेको अक्षर अभिलेखमा पाइएको छैन ।

**ए**—कारको मात्रा लाउँदा अक्षरको टाउकोबाट बायाँ पट्टि अलिकति तल झुक्ने गरी तेर्सो धर्को तान्नुपर्छ ।

**ऐ**– कारको मात्रा लाउँदा अक्षरको टाउको बाट बायाँ पट्टि अलिकति तल झुक्ने गरी तेर्सो धर्को तानी त्यसको माथि फेरि अर्को तेर्सो धर्सो बायाँ पट्टिनै तान्नु पर्छ ।

**ओ**–कारको मात्रा लाउँदा अक्षरको टाउकोमा पुतलीको जुँगा जस्तो लगाउनु पर्छ ।

**औ**- कारको मात्रा लाउँदा अक्षरको टाउकोमा पुतलीको जँुगा जस्तो लगाई दुइतिरको जँुगाको वीचमा फेरि अर्को धर्को अलिकति वायाँपट्टि लर्कने गरी लगाउनु पर्छ ।

ं— अनुस्वार लगाउँदा अक्षरको माथि शून्यको डल्लो लगाउनुपर्छ ।

:— विसर्ग लगाउँदा अक्षरको पछाडि दुइटा शून्यको डल्लो लगाउनुपर्छ ।

# मात्रा लाउँदा फरक हुने विशेष नियम

**आ** – कारको मात्रा लाउँदा ख, ग, ठ, ण, थ, ध, ब, यति वर्णमा पछाडि अंकुश जस्तो झुण्ड्याउनुपर्छ । ज, मा चाहिँ ज को तीन चोसो मध्ये बीचको चोसोमा सोझो धर्का माथितिर तान्नुपर्छ ।

**उ** -- कारको मात्रा लाउँदा ग, त. द, भ, श, यति वर्णमा खुट्टा पछिल्तिर मर्काई ठाडै माथितिर तान्नु पर्छ । क, र, यति वर्णमा चाहिँ अहिलेको देवनागरी अक्षरमा जस्तै खुट्टामा ७ अङ्क जस्तो तर्कुल्ले लगाउनु पर्छ । छ, ट, ठ, ढ, ध, व यतिवर्णमा चाकवाट तलतिर अलिकता धर्को झार्नुपर्छ

**ऊ** – कारको मात्रा लाउँदा ग. त, द, भ, श, यति वर्णमा खुट्टा पछिल्तिर मर्काई ठाडै माथितिर तानिसकेपछि त्यस धर्कोको पछिल्तिर बीचमा अंकुश जस्तो झुन्ड्याउनु पर्छ । क, र, यति वर्णमा चाहिँ खुट्टाको टुप्पोमा तर्कुल्ले लगाइसकेपछि फेरी खुट्टाको टुप्पोबाट अर्को पुच्छर जस्तो झुन्ड्याउनु पर्छ । छ, ट, ड, ढ, व, यति वर्णमा उपर्युक्त नियमबमोजिम उ कारको मात्रा लगाई सकेपछि त्यस मात्राको टुप्पोबाट बायाँ पट्टि अलिकति तेसो धर्को तानी तलतिर कुकुरको पुच्छर जस्तो घुमाउनु पर्छ ।

**(ओ औ)**– कारको मात्रा लाउँदा ख, ग, ज, ठ, ण, थ, ढ, ब, श, यतिवर्णमा उपर्युक्त नियम बमोजिम आकारको मात्रा लगाइसकेपछि टाउको-बाट बायाँ पट्टि लर्कनेगरी माथितिर छर्के धर्का ओ कारको भए एउटा औकारको भए दुइटा तान्नुपर्छ ।

# लिच्छवि लिपिको अंक

लिच्छवि कालका लिपिमा एक स्थानी अंक एक देखि नौ सम्मका क्रमले बेग्ला बेग्लै हुन्छन् । त्यसपछि दशस्थानी अंक दश वीस् तीस् चालिस् पचास साठी सत्तरी असी नब्बेका अंक पनि बेग्ला बेग्लै हुन्छन् । त्यस पछि शतस्थानी अंकमा पनि एकशय, दुईशय, तीनशय, चार शय, पाँच शय, छ शय, सात शय, आठ शय, नौशय, का अंक बेग्लै हुन्छन् । एवं रीतले हजार आदि अंक पनि बेग्लै हुन्छन् । यसरी लिच्छविकालमा अंकहरू थुप्रै बनेका छन् । किनभने तिनताका अहिलेको जस्तो शून्यको आविष्कार भएको थिएन । अहिलेत शून्यको आविष्कार भईसकेको हुनाले नौसम्मका अंक र शून्य समेत गरी दशवटा चिन्ह द्वारा हामीले यथेष्ट अंक बनाउन पाएका छौं । तर लिच्छबिकालमा त्यसो नभएको हुनाले इतिहासकारहरू अंकको झमेलामा पर्दछन् । त्यसैले अंकको विवरण तथा नियम जान्नु आवश्यक परेको छ [१]।

---

१ प्राचीन ग्रन्थ तथा अभिलेखहरूमा हजारको अङ्क पाइएको छैन । त्यसैले त्यसको रूप थाहा भएको छैन । हुनत ६०० भन्दा माथिनै अङ्क पाइएको छैन तापनि ५००, ६०० कै अङ्कको शैलीको आधारबाट ९०० सम्मका अङ्क अनुमान गर्न सकिन्छन् ।

# हलन्त पार्ने नियम

लिच्छविकालमा हलन्त पद लेख्नुपर्दा अहिलेको जस्तो खुट्टा काटिदैन। उपान्त्यवर्णको खुट्टामा अन्तिम हल् वर्णलाई सानो पारी झुन्ड्याउनु, अनि त्यो हलन्त पद बन्दछ।

# लिच्छवि लिपिको व्यञ्जन वर्णमा व्यञ्जन वर्ण जोड्ने सामान्य नियम

एउटा व्यञ्जन वर्णमा अर्को व्यञ्जन वर्ण जोड्दा पहिलो व्यञ्जन वर्णको खुट्टामा अर्को व्यञ्जन वर्ण झुण्ड्याउनुपर्छ। रेफ लगाउँदा चाहिँ टाउँको माथि ठाडो धर्को लाउनुपर्छ।

# व्यञ्जन वर्णमा य जोड्ने विशेष नियम

जुनसुकै व्यञ्जन वर्णमा य जोड्दा सो व्यञ्जन वर्णको खुट्टामा अहिलेको देवनागरी लिपिको य अक्षर जस्तै लगाउनु पर्छ। तर सो य को खुट्टा चाहिँ तल झार्नु हुँदैन।

# संयुक्त व्यञ्जन वर्णमा मात्रा लाउने नियम

संयुक्त व्यञ्जनवर्णमा मात्रा लाउँदा उपर्युक्त नियम बमोजिम (उ–ऊ) को मात्रा तलतिरको व्यञ्जन वर्णको खुट्टामा लाउनु पर्छ। अरू मात्रा चाहि उपर्युक्त नियम बमोजिम माथिल्लो व्यञ्जन बर्णमा लाउनुपर्छ। रेफ भए रेफकै टाउकामा लाउनुपर्छ।

# अंकका रूप परिचय

१ को अङ्क लिच्छविकालको लिपिमा छड्के एक धर्को हुन्छ ।

२ को अङ्क लिच्छविकालको लिपिमा छड्के दुइधर्का हुन्छन् पछिल्लो कालमा गएर अहिलेको देवनागरी अक्षरको २ जस्तै पनि पाइन्छ ।

३ को अङ्क लिच्छविकालको लिपिमा छड्के तीन धर्का हुन्छन् । पछिल्लो कालमा गएर अहिलेको देवनागरी अक्षरको ३ जस्तै भएको पनि पाइन्छ ।

४ को अङ्क लिच्छविकालको लिपिको प मा क जोडिएको अक्षरले बुझाउँछ । पछिल्लो कालमा गएर तत्कालको लिपिको ज मा क जोडिएको अक्षरले बुझाउँछ ।

५ को अंक अहिलेको देवनागरी अक्षरको हु जस्तै हुन्छ । पछिल्लो कालमा गएर लिच्छविलिपिको भु अक्षरले बुझाउँछ ।

६ को अंक लिच्छविलिपिको ट अक्षरले बुझाउँछ । पछिल्लो कालमा गएर अहिलेको दैवनागरी अक्षरको ह्व जस्तो पनि पाइन्छ।

७ को अंक लिच्छविलिपिको ग्र अक्षरले बुझाउँछ । पछिल्लो कालमा गएर ग्र अक्षरले बुझाउँछ ।

८ को अंक लिच्छविलिपिको रू अक्षरले बुझाउँछ पछिल्लो कालमा गएर अहिलेको देवनागरी अक्षरको न्ह को टाउकोमा रेफलागेंको जस्तो पाइन्छ ।

९ को अंक हिजो आज वाक्य लेख्दा लेखिने प्रश्न चिन्ह ? जस्तो छ पछिल्लो कालमा गएर अहिलेको देवनागरी अक्षरको द मा एकलख दिएको जस्तो पाइन्छ ।

१० यो अंक लिच्छविलिपिको स्प अक्षरले बुझाउँछ । पछिल्लो कालमा गएर लृ अक्षरले बुझाएको छ ।

२० को अंक गोलाकारको बीचमा पटुका बाँधेको जस्तो छड्के धर्को हुन्छ । पछिल्लो कालमा गएर तत्कालको लिपिको थ अक्षरले बुझाउँछ ।

३० को अंक लिच्छविलिपिको ल अक्षरले बुझाउंछ ।

४० को अंक लिच्छविलिपिको य मा त जोडिएको अक्षरले बुझाउछ ।

५० को अंक अङ्ग्रेजी अक्षरको सी जस्तो छ ।

६० को अङ्क लिच्छविलिपिको ह्रस्व चु अक्षरले बुझाउंछ ।

७० को अङ्क लिच्छविलिपिको दीर्घ चू अक्षरले बुझाउछ ।

८० को अंकको रूप गोलाकारको वीचबाट ठाडो धर्को गएको हुन्छ ।

९० को अंकको रूप गोलाकारको वीचमा गुणन वा धन चिन्ह रहेको हुन्छ ।

१०० को अंक लिच्छविलिपिको अ अक्षरले बुझाउंछ । त्यो अहिलेको देवनागरी अक्षरको डिको नभएको दन्त्य स जस्तो छ। पछिल्लो कालमा गएर झण्डै देवनागरीको अ अक्षर जस्तै हुन लागेको पाइन्छ।

२०० को अंकमा अहिलेको देबनागरी अक्षरको डिको नभएको दन्त्य स जस्तो को शिरको पछिल्तिर एक धर्को लगाएको हुन्छ। पछिल्लो कालमा गएर तत्कालको लिपिको अ को खुट्टा मर्काएको हुन्छ।

३०० को अंक मा अहिलेको देवनागरी अक्षरको डिको नभएको दन्त्य स जस्तो को शिरको पछिल्तिर एक धर्को लगाएर त्यसको तल अर्को एक धर्को लगाएको हुन्छ । पछिल्लो कालमा गएर अर्को खुट्टा मर्काइन पनि शिरबाट अलिकता कान्नानी झारेको हुन्छ ।

४०० अंक लिच्छविलिपिको शयको अंकमा चारको अंक जोडि दिएको हुन्छ। त्यसले चार शयलाई बुझाउंछ । यस्तै गरी पाँच शयको अंक लिच्छविलिपिको शयको अंकमा पाँचको अंक जोडिएको हुन्छ । छ शयको अंकको रूप शय अंकमा छ को अंक जोडिएको हुन्छ । सात शय अङ्कको रूप शयको अंकमा सातको अंक जोडिएको एवं रीतले ८ शय ९ शयको रूप शयमा ८, ९ का अंक जोडिएका हुन्छन। कालान्तरमा गएर ५०० को अंकदेखि लिएर शयको अंकको आधी अंकमा मात्र ५, ६ आदि अंक जोडिएका पनि पाइन्छन ।

# अभीष्ट अंक बनाउने नियम

एघार वनाउनुपर्दा दशको अंकमा एकको अंक जोड्नुपर्छ । बान्ह वनाउँदा दुइको अंक, तेन्ह वनाउदा तीनको अंक, यस्तै १९ सम्ममा ९ सम्म जोड्दै जानुपर्छ । यसै गरी २१ देखि २९ सम्मका अंक बनाउँदा वीसको अंकमा १ देखि ९ सम्मका अंक जोड्दै जानुपर्छ । एवं रीतले ३०,४०,५०, आदि अंकमा १ देखि ९ सम्मका अंक जोडेर ९९ सम्मका अंक वन्दछन् शय भन्दा वढी अंक वनाउंदा वढी जति शयको पछाडि लेख्नु पर्छ । जस्तै २,३ संख्या लेख्दा पहिले दुइशयको अंक त्यको पछाडि दशको अंक, त्यस्को पछाडि तीनको अंक लेखिन्छ । यस्तै अरू अंकमा पनि हुन्छ ।

# लिच्छविलिपि–संग्रह

## (स्वरवर्ण)

देवनागरी लिच्छविलिपि (चित्र १)




*टिप्पणीः–*

+ चापागाउँको शिवदेवको अभिलेखबाट ✝ लाजिम्पाटको क्षेमसुन्दरीको अभिलेखबाट

## लिच्छविलिपि-संग्रह
### (व्यञ्जनवर्ण)

देवनागरी  लिच्छविलिपि  (चित्र २)



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी　　लिच्छविलिपि　　(चित्र ३)



देवनागरी | लिच्छविलिपि | (चित्र



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी | लिच्छविलिपि | (चित्र ५)




*टिप्पणी:-*

\+ पलाञ्चोकको विजयस्वाभिनीको अभिलेखबाट

देवनागरी लिच्छविलिपि (चित्र ६



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी लिच्छविलिपि (चित्र ७)



(चित्र

| देवनागरी | लिच्छविलिपि |
|---|---|
| ढ |  |
| ण | (ण् +स्वर)  |
| णा |  |
| णि |  |
| णी |  |
| णे |  |
| णै |  |

## स्वरयुक्तव्यञ्जन वर्ण

(चित्र ६)

| देवनागरी | लिच्छविलिपि |
|---|---|
| णं |  |
| त |  (त+स्वर) |
| ता |  |
| ति |  |
| ती |  |
| तु |  |
| ते |  |

देवनागरी　　लिच्छविलिपि　　(चित्र १०



# स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी　　लिच्छविलिपि　　(चित्र ११)



देवनागरी लिच्छविलिपि (चित्र १२



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी लिच्छविलिपि (चित्र १५)



देवनागरी　　लिच्छविलिपि　　(चित्र १४)



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी | लिच्छविलिपि | (चित्र १५)

| देवनागरी | लिच्छविलिपि |
|---|---|
| नी | |
| नु | |
| नृ | |
| ने | |
| नै | |
| नौ | |
| नं | |



देवनागरी लिच्छविलिपि (चित्र १६



# स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी लिच्छविलिपि (चित्र १७)



देवनागरी | लिच्छविलिपि | (चित्र १८)



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी | लिच्छविलिपि | (चित्र १६)



देवनागरी लिच्छविलिपि (चित्र २०)



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी  लिच्छविलिपि  (चित्र २१)



(चित्र २२)

| देवनागरी | लिच्छविलिपि |
|---|---|
| यि | |
| यु | |
| यृ | |
| ये | |
| यै | |
| यो | |
| यं | |
| यः | |



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी लिच्छविलिपि (चित्र २३)



देवनागरी लिच्छविलिपि (चित्र २



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी　　लिच्छविलिपि　　(चित्र २५)



देवनागरी लिच्छविलिपि (चित्र २६)



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी लिच्छविलिपि (चित्र २७)



देवनागरी लिच्छविलिपि (चित्र २

| देवनागरी | लिच्छविलिपि |
|---|---|
| शृ | |
| शॄ | |
| शे | |
| शै | |
| शो | |
| शौ | |
| शा | |



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी लिच्छविलिपि (चित्र २६)



देवनागरी लिच्छविलिपि (चित्र ३०)



## स्वरयुक्तव्यञ्जन वर्ण

(चित्र ३१)

| देवनागरी | लिच्छविलिपि |
| --- | --- |
| सो |  |
| सौ |  |
| सं |  |
| सः |  |
| ह |  (ह्+स्वर) |
| हा |  |
| हि |  |

# लिच्छविलिपि–संग्रह

देवनागरी लिच्छविलिपि (चित्र ३२)



## स्वरयुक्तव्यञ्जन वर्ण

देवनागरी लिच्छविलिपि (चित्र ३३)



(चित्र ३४)

| देवनागरी | लिच्छविलिपि |
|---|---|
| त्र् |  १० |
| त्रे |  १ |
| त्रो |  १२ |
| ज्ञा |  १, ३, ७ (ज़+स्वर) |
| ज्ञो |  १ |
| क्य |  १ (क्+य्+स्वर) |
| क्यै |  १ |

## स्वरयुक्तव्यञ्जन वर्ण+ यसंयुक्तवर्ण

देवनागरी लिच्छविलिपि (चित्र ३५)



देवनागरी लिच्छविलिपि (चित्र ३६



## यसंयुक्त वर्ण

देवनागरी लिच्छविलिपि (चित्र ३७)



# लिच्छविलिपि-संग्रह

देवनागरी | लिच्छविलिपि | (चित्र ३८)



## यसंयुक्त वर्ण

देवनागरी | लिच्छविलिपि | (चित्र ३९)



देवनागरी लिच्छविलिपि (चित्र ४



## यसंयुक्त वर्ण + रसंयुक्त वर्ण

देवनागरी  लिच्छविलिपि  (चित्र ४१)



देवनागरी | लिच्छविलिपि | (चित्र ४२)



# रसंयुक्त वर्ण

| देवनागरी | लिच्छविलिपि | (चित्र ४३) |
|---|---|---|
| प्र |  | (प्+र्+स्वर) |
| प्रा |  | |
| प्रि |  | |
| प्रे |  | |
| प्रो |  | |
| ब्र |  | (ब्+र्+स्वर) |
| ब्रा |  | |

(चित्र ४



| देवनागरी | लिच्छविलिपि |
| --- | --- |
| भ्र | (भ्+र+स्वर) |
| श्र | (श्+र+स्वर) |
| श्रि | |
| श्री | |
| श्रु | |
| श्रे | |
| श्रै | |

## रसंयुक्त वर्ण + लसंयुक्त वर्ण

(चित्र ४५)

| देवनागरी | लिच्छविलिपि | |
|---|---|---|
| स्र |  [१२] | (स्+र्+स्वर) |
| स्रा |  [१२] | |
| स्रो |  [१३] | |
| क्ल |  [१] | (क्+ल्+स्वर) |
| ल्ल |  [३] | (ल्+ल्+स्वर) |
| श्ल |  [१] | (श्+ल्+स्वर) |
| ह्ला |  [१] | (ह्+ल्+स्वर) |

देवनागरी लिच्छविलिपि (चित्र ४६)



## वसंयुक्त वर्ण + मिश्र वर्ण

(चित्र ४७)



| देवनागरी | लिच्छविलिपि | |
|---|---|---|
| श्व | | (श् + व् + स्वर) |
| ष्व | | (ष् + व् + स्वर) |
| स्व | | (स् + व् + स्वर) |
| स्वा | | |
| स्वे | | |
| क्ति | | (क् + स्वरव्यञ्जन) |
| क्ते | | |

| देवनागरी | लिच्छविलिपि |
|---|---|
| क्षं |  [१२] |
| क्षः |  [११] |
| क्षो |  [१] |
| क्षा |  [२] |
| क्या |  [१] |
| क्य्र |  [५] |
| क्ष्णा |  [१] |

(चित्र ४८)

# मिश्र वर्ण

देवनागरी लिच्छविलिपि (चित्र ४६)



(चित्र ५

| देवनागरी | लिच्छविलिपि |
|---|---|
| ङ्कं | [1] |
| ङ्को | [8] |
| ङ्क्षं | [1] |
| ङ्क्षें | [1] |
| ङ्खं | [11] |
| ङ्खु | [12] |
| ङ्खुः | [12] |



# मिश्र वर्ण

देवनागरी　　　　लिच्छविलिपि　　　　(चित्र ५१)



| देवनागरी | लिच्छविलिपि (चित्र ५२) |
|---|---|
| ङ्घं |  [१२] |
| ङ्घा |  [१२] |
| ङ्घ्या |  [६], [१२], [१०] |
| ङ्प्र |  [८] |
| च्च |  [११] ( च्+स्वरयुक्तव्यञ्जन) |
| च्चा |  [१], [१०] |
| च्छ |  [१] |

## मिश्र वर्ण

देवनागरी　　　　लिच्छविलिपि　　　　(चित्र ५३)



देवनागरी लिच्छविलिपि (चित्र ५४)



# मिश्र वर्ण

देवनागरी | लिच्छविलिपि | (चित्र ५५)



| देवनागरी | लिच्छविलिपि |
|---|---|
| तं | [12] |
| ता | [1], [10] |
| त्ति | [8] |
| ती | [12] |
| त्रे | [1] |
| त्न | [1] |
| त्प | [1] |
| त्र | [1] |



(चित्र ५६)

## मिश्र वर्ण

देवनागरी | लिच्छविलिपि | (चित्र ५७)

| देवनागरी |
|---|
| त्वा |
| त्यु |
| त्यू |
| त्म |
| त्मा |
| त्मी |
| त्स |



## लिच्छविलिपि-संग्रह

देवनागरी | लिच्छविलिपि | (चित्र ५८)



## मिश्र वर्ण

देवनागरी | लिच्छविलिपि | (चित्र ५९)

| देवनागरी |
|---|
| द्धे |
| ध्द |
| ध्दा |
| ध्द्या |
| ध्दि |
| द्भ |
| द्भा |



देवनागरी लिच्छविलिपि (चित्र ६०)



| देवनागरी | लिच्छविलिपि |
| --- | --- |
| ङ्मि | [४] |
| ङ्मिः | [१२] |
| -कु | [८] (न् + स्वरयुक्तव्यञ्जन) |
| -त | [१] |
| -ताः | [१] |
| -त्र | [३] |
| -ता | [१२] |

# मिश्र वर्ण

देवनागरी | लिच्छविलिपि | (चित्र ६१)

| | |
|---|---|
| न्तां |  [५] |
| न्त्य |  [१०] |
| न्त्या |  [१] |
| न्त्वा |  [१] |
| न्ति |  [७] |
| न्ते |  [१२]  [११] |
| न्था |  [१२] |

देवनागरी लिच्छविलिपि (चित्र ६२)



# मिश्र वर्ण

देवनागरी | लिच्छविलिपि | (चित्र ६३)



देवनागरी लिच्छविलिपि (चित्र ६४)



# मिश्र वर्ण

देवनागरी लिच्छविलिपि (चित्र ६५)



| देवनागरी | लिच्छविलिपि |
|---|---|
| स्मु |  [१] |
| स्मृ |  [१२] |
| म्ब |  [१] |
| म्बा |  [१] |
| म्बि |  [६] |
| म्बु |  [४] |
| म्ना |  [२] |

(चित्र ६६)

## मिश्र वर्ण

देवनागरी लिच्छविलिपि (चित्र ६७)



## मिश्र वर्ण

देवनागरी लिच्छविलिपि (चित्र ६९)



देवनागरी | लिच्छविलिपि | (चित्र ७०)



# मिश्र वर्ण

देवनागरी लिच्छविलिपि (चित्र ७१)



| देवनागरी | लिच्छविलिपि |
| --- | --- |
| र्मा | [७] |
| र्मि | [१] |
| र्भा | [१] |
| र्भ | [२] |
| र्मीः | [१] |
| र्मृ | [१२] |
| र्म | [१२] |

(चित्र ७२)



# मिश्र वर्ण

देवनागरी | लिच्छविलिपि | (चित्र ७३)



# मिश्र वर्ण

| देवनागरी | लिच्छविलिपि (चित्र ७५) | |
|---|---|---|
| र्शी |  [७] | |
| र्शा |  [७] | |
| र्ह |  [७] | |
| ल्यु |  [८] | (ल+स्वरयुक्त०यञ्जन |
| ल्मू |  [८] | |
| श्र |  [२] | (श+स्वरयुक्त०यञ्जन, |
| श्रा |  [६]  [१] | |

देवनागरी लिच्छविलिपि (चित्र ७६)



## मिश्र वर्ण

देवनागरी | लिच्छविलिपि | (चित्र ७७)



# लिच्छविलिपि–संग्रह

देवनागरी | लिच्छविलिपि | (चित्र ७८)



## मिश्र वर्ण

देवनागरी    लिच्छविलिपि    (चित्र ७६)

| देवनागरी |
|---|
| स्त्य |
| स्त्रा |
| स्ति |
| स्तु |
| स्त्वे |
| स्ते |
| स्तै |



देवनागरी लिच्छविलिपि (चित्र ८०)



## मिश्र वर्ण

देवनागरी लिच्छविलिपि (चित्र ८१)



# *पशुपति सूर्यघाटको विजयवतीको अभिलेखबाट

देवनागरी लिच्छविलिपि (चित्र ८२)




*टिप्पणी—*

यस अभिलेखमा ६ श्लोक छन्, श्लोकमा अङ्क दिइएको छ। त्यसै अङ्कको उतार हो। यसको पता संशोधनमण्डल बाट भएको हो।

## संख्या

# *चाँगुको मानदेवको स्तम्भलेखबाट

देवनागरी लिच्छविलिपि (चित्र ८३)

| देवनागरी | लिच्छविलिपि |
|---|---|
| १ |  |
| २ |  |
| ३ |  |
| ५ |  |
| ६ |  |
| ७ |  |

*टिप्पणी—*

यस अभिलेखश्लोकमा छन् । श्लोकमा संख्या लेखिएका छन् । केही देखिन्छन् । केही मेटिइसकेका छन् । त्यसै अङ्कको उतारको हो । संशोधनमण्डलको इतिहास संशोधनको प्रमाणप्रमेयमा पनि १ देखि ६ सम्मका अङ्क छापिएका छन् । त्यस पछि महेशराज पन्तको इतिहास संशोधन ५५ क्रम संख्यामा पनि छापिएका छन् । साथै अरू अंक पनि छन् ।

लिच्छविलिपि-संग्रह

# चाँगुको मानदेवको स्तम्भलेखबाट

(चित्र ८४)

| देवनागरी | लिच्छविलिपि |
| --- | --- |
| ८ |  |
| ९ |  |
| १० |  |
| १५ |  |
| १६ |  |
| १७ |  |

## संख्या

# *देउपाटनको प्रभुसङ्घको अभिलेखबाट

देवनागरी | लिच्छविलिपि | (चित्र ८५)




*टिप्पणी—*

यस अभिलेखमा जग्गा मुठी राखेको उल्लेख छ। जग्गाको संख्या किटाउँदा अक्षरले र अङ्कले किटाइएको छ। सोही अङ्कको उतार हो।

# *देउपाटनको रत्नसङ्घको अभिलेखनाट

| देवनागरी | लिच्छविलिपि |
|---|---|
| ९० | |
| १०० | |
| १५० | |
| १८० | |
| २०० | |

(चित्र ८६)



*टिप्पणी—*

* यस अभिलेखमा जग्गा गुठी राखेको उल्लेख छ। जग्गाको संख्या किटाउँदा अक्षरले र अङ्कले किटाइएको छ। यहाँ दिएको सोही अङ्कको उतार हो।

संख्या

# देउपाटनको रत्नसङ्घको अभिलेखबाट

देवनागरी　　　　लिच्छविलिपि　　　　(चित्र ८७)



# *सरकारी राष्ट्रिय पुस्तकलयमा रहेको नं. ६६० संक्षिप्त भगवद्गीता बाट

देवनागरी लिच्छविलिपि (चित्र ८८)




*टिप्पणी—*

* यो पुस्तक ताडपत्रमा उत्तरलिच्छविलिपिले लेखिएको छ । यसमा पत्र संख्या दिइएको छ । त्यसैबाट उतार दिइएको हो ।

संख्या

# *सरकारी राष्ट्रिय पुस्तकालयमा रहेको नं. ४१५ को निस्वासतत्वमुखबाट

देवनागरी　　　लिच्छविलिपि　　　(चित्र ८९)




*टिप्पणी—*

* यो पुस्तक ताडपत्रमा उत्तरलिच्छविलिपिले लेखिएको छ। यसमा पत्र संख्या दिइएको छ। त्यसैबाट उतार दिइएको हो।

## लिच्छविलिपि-संग्रह

# उदाहरण

(चित्र ६०)

## *चाँगुको मानदेवको स्तम्भलेखबाट-



प्रायात्पूर्व्वपथेन तत्र च शठा ये पूर्वदेशाश्रयाः
सामन्ताः प्रणिपातबन्धुरशिरः प्रभ्रष्टमौलिस्रजः
तानाज्ञावशवर्तिनो नरपतिः संस्थाप्य तस्मात्पुनः
निर्भीः सिंह इवाकुलोत्कटसटः पश्चाद्भुवङ्जगमिवान् १६

* यसको छापा भगवानलाल नं. १ लेवी नं १ ट्ची नं १ मा प्रकाशित छ ।

## शिलालेखको उदाहरण

( चित्र ६१ )

### +पशुपति ठूलो त्रिशूलको पादपीठको लेखबाट



श्रीमानदेवनृपतेश्च गुणप्रसादात्
भक्त्या विशुद्धमतिना❀जयलम्भनाम्ना
लिङ्गञ्जयेश्वरमिति प्रथितं नृलोके
संस्थापितं स नृपतेर्ज्जगतो हिताय

*टिप्पणी—*

\+ यसको छापा भगवानलाल नं २ टुचि नं ८ मा प्रकाशित छ।

❀ यो पाठ संशोधनमण्डलले निर्णय गरेको हो। पहिले जयवर्म भनी अशुद्ध परम्परा चलिरहेको थियो। त्यसको संशोधन इतिहाससंशोधनको प्रमाणप्रमेय पहिलो भागको २६८ पृष्ठमा हेर्नुहोस्।

(चित्र ६२)

# *जैसीदेवलको वसन्तदेवको अभिलेखबाट



ॐ स्वस्तिमानगृहात्परमदैवतवप्प भट्टारकम
हाराज श्रीपादानुध्यतः श्रु तनयदयादानदा
क्षिण्यपुण्यप्रतापविकसितसित कीर्तिर्भट्टारकम
हाराज श्री वसन्तदेवः कुशल ।

*टिप्पणी—*

* यसको छापा भगवानलाल नं ३ टुचि नं १३ मा प्रकाशित छ ।

## शिलालेखको उदाहरण

(चित्र ६३)

### *का.मु. लगनको दूतकविक्रमसेनको अभिलेखनाट:



····ज्ञामनाहत्यान्यथा कुर्यात्कारयेद्वा तमहमुत्पथ···

···न नियतमनुशासितास्मि भविष्यद्भिरपि भूप ··

··· कृत प्रसादानु वर्तिभिरेव भवितव्यमिति दूत···

···त्र राजपुत्र विक्रमसेन

टिप्पणी—

❀ यसको छापा भगवानलाल नं ६ दुचि नं ४० मा प्रकाशित छ।

(चित्र १४)

## *बूढानीलकण्ठको शिवदेवको अभिलेखबाट-



स्वस्ति मानगृहाच्छु तनयगाम्भीर्य्यवीर्य्याद्यंशेषु
सद्गुणगणाधारो लिच्छविकुलकेतुर्भट्टारकमहा
राज श्री शिवदेवःकुशली... ...

*टिप्पणी*—

* यसको छापा भगवानलाल नं ५ टुचि नं २७ मा प्रकाशित छ।

## शिलालेखको उदाहरण

( चित्र १५ )

## *वुंगमती जाउलाखेलको अंशुवर्मा अभिलेखबाट-



स्वस्ति कैलासकूटभवनाद्भगवत्पशुपतिभट्टारक
पादानुगृहीतो बप्पपादानुध्यातः श्रीमहासामन्तां
शुवर्मा कुशली बूगायूमीग्रामनिवासोपगतां कुटु
म्बिनो यथा प्रधान ङ्कुशलमाभाष्य समाज्ञापयति

*टिप्पणी —*

* यसको छापा भगवानलाल नं ६ टुचि नं ३९ मा प्रकाशित छ ।

(चित्र ६६)

## *देउपाटनगणेशस्थानको अंशुवर्माको अभिलेखबाट-



ॐ स्वास्ति कैलासकूटभवनादनिशिनिसिचानेकशास्त्रा
र्थविमर्शावसादितासद्दर्शनतया धर्माधिकारास्थितिका
रणामेवोत्सवमनतिशयम्मन्यमानो भगवत्पशुप
तिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातः श्र्यं
शुवर्मा कुशली

*टिप्पणी—*

* यसको छापा भगवानलाल नं ७ टुचि नं ४१ मा प्रकाशित छ ।

## शिलालेखको उदाहरण

(चित्र ६७)

## *टुँडिखेलको विभुवर्माको अभिलेखबाट-



श्र_यंशुवर्म्मप्रसादेन पितुः पुण्यविवृद्धये
कारिता सत्प्रणालीयं वार्त्तेन विभुवर्म्मणा

*टिप्पणी—*

✻ यसको छापा भगवानलाल नं ८ ट्रुची नं ४८ मा प्रकाशित छ । अहिले टूडिखेलमा यो शिलालेख छैन ।

(चित्र ९८)

## *ल.पु. छिन्नमस्ताको जिष्णुगुप्तको अभिलेखबाट-



कैलासकूटभवनाद्भगवत्पशुपतिभट्टारकपादानु
गृहीतो बप्पपादानुध्यातः श्रीजिष्णुगुप्तः कुशली थम्बू
गाङ्गुल्मूलवाटिकाग्रामेषु निवासमुपगतान्कुटु
म्बिनः कुशलमाभाष्य समाज्ञापयति

* यसको छापा भगवानलाल नं ९ दुवि नं ५० मा प्रकाशितछ ।

## शिलालेखको उदाहरण

(चित्र १६)

# *का.पु. मीननारायण भैरवढोकाको जिष्णुगुप्तको अभिलेखबाट·



लिच्छविकुलकेतुभट्टारकराजश्रीध्रुवदेवपुरस
रेण सफलजननिरुपद्रवोपायसंविधानार्पित...
नसःकैलासकूटवभनाद्भगवत्पशुपतिभट्टार
कपादानुहीतो बप्पपा दानुध्यातः श्रीजिष्णुगुप्तः
कुशली

* यसको छापा भगवानलाल नं १० टुची नं ५२ मा प्रकाशित छ।

(चित्र १००)

# *पशुपति छत्रचण्डेश्वरको जिष्णुगुप्तका पालाको अभिलेखबाट-



सम्यग्ज्ञानादियुक्तः सकलगुणगणं चोभियित्वा प्रधानम्
व्रह्मादिस्थावरान्तजगदिदमखिलं योसृजद्विश्वस्तपम्
आजीव्यं सर्व्वपुंसाङ्गिरितरुगहनं यः करोत्येकस्तपम्
पायात्सोद्य प्रसन्नः स्मरतनुदहनश्छत्त्रचण्डेश्वरो वः
स्वस्ति श्री जिष्णुगुप्तस्य प्रवर्द्धमानविजयराज्ये

टिप्पणी—

* यसको छाप। भगवानलाल नं ११ दुर्षि नं ५६ मा प्रकाशित छ।

# शिलालेखको उदाहरण

(चित्र १०१)

## चागुनारायणमन्दिरको शिवदेवको अभिलेखबाट॰



ॐ स्वस्तिश्रीमत्कैलासकूटभवनात् लक्ष्मीलतालम्बनकल्प
पादपो भगवत्पशुपतिभट्टारकपादानुगृहीतोबप्पया
दानुध्यातः परमभट्टारकमहाराजाधिराजश्रीशिवदेवः कु
शाली वैद्यग्रामके प्रधानाग्रेसरान्सकलनिवासिकुटुम्बिनो
यथार्हं कुशलमभिधाय समाज्ञापयति

❋ यसको छापा भगवानलाल नं १२ टुची नं ७७ मा प्रकाशित छ।

(चित्र १०२)

## पशुपति वज्रघरको दूतंक शिवदेवका अभिलेखबाट·



यतो धर्मशास्त्रवचन

बहुभिर्वसुधा दत्ता राजभिस्सगरादिभिः

यस्य यस्य यदा भूमिस्तस्यतस्य तदा फल—

मिति स्वयमाज्ञा दूतकश्चात्र भट्टारक श्रीशिवदेवः

*टिप्पणी—*

✽ यसको छापा भगवानलाल नं १३ टुची नं ७३ मा प्रकाशित छ।
यो शिलालेख ढुङ्गा हाल वीरपुस्तकालयमा छ।

| अभिलेख | लिच्छविलिपि | देवनागरी |
|---|---|---|
| वाँगुको मानदेवको |  | ३८६ |
| ाजिमपाटको नरवर्माको |  | ३८८ |
| ाजिमपाटको मानदेवको |  | ३८९ |
| ाजिमपाटको क्षेमसुन्दरीको |  | ३९० |
| ाँडिगाउँ टुनालदेवीथानको |  | ३९७ ⊛ |
| शुपतित्रिशूलको जयलम्भको |  | ४१३ |
| लाश्वोकको विजयस्वामिनीको |  | ४२५ |
| ानकोटको वसन्तदेवको |  | ४२८ |
| ानकोटकिसिपिडीको |  | ४४९ |

*टिप्पणी—*

⊛ टुचिको पाठ ३९९

| अभिलेख | लिच्छविलिपि | देवनागरी |
|---|---|---|
| पशुपति चौसट्ठीलिङ्गको |  | ४६२ |
| मृगस्थली रामदेवको |  | ४६६ |
| किसिमिढीकोगणदेवको |  | ४८० |
| बलम्बुको गणदेवको |  | ४८२ |
| पशुपति अर्द्ध शौरीश्वरको |  | ४८७ |
| चपलीगाउँकोदूतकवृषवर्माको |  | ४८६ |
| भ.पु. गोलमाधाटोलको |  | ५१६ |
| धरमथलीको शिवदेवको |  | ५१७ |
| वूढानीलकण्ठकोदूतकविप्रवर्माको |  | ५१७ |
| खोपासीकोशिवदेवकोअंशुवर्माको |  | ५२० |

❀ दुचिको पाठ ४८६ — वेएडालको पाठ ५१७ ❀ दुचिको पाठ ५१८
दुचिको पाठ

## संवत्को उदाहरण

| अभिलेख | लिच्छविलिपि | देवनागरी |
|---|---|---|
| धरमपुरको दूतकभोगचन्द्रको |  | ५२० |
| लगनको दूतक विक्रमसेनको |  | ५३५ |
| हाँडिगाउँको अंशुवर्माको |  | ३० |
| हाडिगाउँको अंशुवर्माको |  | ३२ |
| साँगाको अंशुवर्माको |  | ३२ |
| देउपाटनको अंशुवर्माको |  | ३६ |
| .पु. छिन्नमस्ताको ध्रुवदेवको |  | ४८ |
| ल.पु.दरबारको नरेन्द्रदेवको |  | ६७ |
| देउपाटनको नरेन्द्रदेवको |  | ७१ |
| ल.पु. टंगलटोलको |  | १४७ |
| पशुपतिकोद्वितीय जयदेवको |  | १५७ |

❀ भगवानलाल पाठ १४७ ❀ भगवानलालको पाठ १५६
दुचि पाठ १४७ दुचि पाठ १५६

# सङ्केत सूची

| संकेत | अभिलेखबाट |
|---|---|
| १ | चाँगुको मानदेवको |
| २ | पशुपतिको ठूलो त्रिशूलको जयस्तम्भको |
| ३ | का.पु. जैसीदेवलको |
| ४ | का. पु. लगनको दूतक विक्रमसेनको |
| ५ | बूढानीलकण्ठको शिवदेवको |
| ६ | बुंगमतीको अंशुवर्माको |
| ८ | टूडिखेलको विभुवर्माको |
| ९ | ल. पु. छिन्नमस्ताको जिष्णुगुप्तको |
| १० | ल. पु मीननारायणको जिष्णुगुप्तको |
| ११ | पशुपतिछत्रचण्डेश्वरको जिष्णुगुप्तको |
| १२ | का. पु. लगन नारायण मन्दिरको |
| १३ | पशुपतिवज्रघरको शिवदेवको |

# विषय–सूची

## स्वरयुक्त व्यञ्जन वर्ण